# विशेष शिक्षा नीति, २०५३

**पृष्ठभूमिः**

नेपालमा रहेका विभिन्न किसिमका अपांगहरू जस्तै दृष्टिविहीन वा दृष्टिशक्ति कम भएका, बहिरा तथा सुस्त श्रवण भएका, सुस्त मनस्थिति भएका, शारीरिक अपांग भएका, सिकाई कठिनाई (असक्षमता) भएका बोली, भाषा र संचार क्षमतामा समस्या भएका एवं बहु अपांगता भएकालाई सामाजिकरणका निम्ति जनचेतना ल्याउने वातावरण सृजना गर्न र उनीहरूलाई स्वावलम्बी एवं आत्मनिर्भर बनाउन अपांगता अनुकूल शिक्षाको उचित व्यवस्था गर्ने उद्देश्यले यो विशेष शिक्षा नीति तयार गरिएको हो ।

नेपाल सरकारले विशेष शिक्षा कार्यक्रम, २०२१ सालबाट शुरु गरेको हो तापनि योजनाबद्ध रूपमा विशेष शिक्षाको विकास र विस्तारको प्रयास २०२८ सालमा लागू भएको राष्ट्रिय शिक्षा पद्धतिको योजनाबाट भएको हो । विशेष शिक्षा परिषद्को गठन (२०३०) उक्त योजनाको प्रतिफल हो ।

अन्तर्राष्ट्रिय अपांग वर्ष सन् १९८१ पछि विदेशी दातृसंस्थाहरूले विशेष शिक्षामा बढी सहयोग गरेको देखिन्छ । तर विदेशी दातृसंस्थाबाट उपलब्ध गराइने सहयोग निश्चित अवधिका लागि हुने भएको हुँदा सो अवधि पछि उक्त कार्यक्रम कसबाट र कसरी संचालन हुने हो कुनै ठेगान नरहने कुरालाई मध्यनजर राखी नेपाल सरकारले पनि आधारभूत शिक्षा तथा सबैका लागि शिक्षा जस्ता कार्यक्रम संचालन गर्ने क्रममा विशेष शिक्षा छोड्दा शिक्षाको एक पक्ष नै छुट्न गई अपुरो हुने देखि विशेष शिक्षालाई आफैले संचालन गर्नु पर्ने आवश्यकता महसुस गऱ्यो । तदनुरूप २०४६ सालमा शिक्षा तथा संस्कृति मन्त्रालयले विशेष शिक्षा विकास विस्तारका लागि सामयिक सुझाव पेश गर्न एउटा समिति गठन गऱ्यो । उक्त समितिले दिएको सुझाव अनुरूप विशेष शिक्षालाई क्रमिक रूपमा शिक्षा तथा संस्कृति मन्त्रालयले आफैले संचालन गर्ने निर्णय गरी २०४८/०४९ को आर्थिक वर्षदेखि विशेष शिक्षा विद्यालयका शिक्षक, कर्मचारीको तलब भत्ता नेपाल सरकारले व्यहोर्ने गरी बजेटको व्यवस्था गरियो । विशेष शिक्षा परिषद्लाई सक्रिय गराउने उद्देश्यले शिक्षा तथा संस्कृति मन्त्रीको अध्यक्षतामा उक्त परिषद्को पुनर्गठन समेत भयो ।



**<u>वर्तमान स्थितिः</u>**

अपांगताको विषयमा भरपर्दो तथ्यांकको अभाव छ । केन्द्रीय तथ्यांक विभागका अनुसार प्रति हजारमा ५.२ अपांग व्यक्तिहरू छन् । अन्तर्राष्ट्रिय अपांग वर्षका सर्भे अनुसार प्रति १०००

मा ३० अपांग व्यक्तिहरू छन् भने विश्व स्वास्थ्य संघका अनुसार प्रति १००० मा १०० अपांग छन् ।

अपांगता भएका बालबालिकाहरूका लागि उपलब्ध शिक्षा सुविधा आवश्यकतानुसार पर्याप्त छैन । तर पनि प्रति वर्ष शिक्षाको अवसर प्राप्त गर्ने अपांग विद्यार्थीहरूको संख्या भने बढ्दैछ । यसका लागि विशेष शिक्षा उपलब्ध गराउने स्थान तथा क्षेत्र क्रमशः विस्तार हुँदैछन् ।

नेपाल सरकारले विगत ३ वर्षदेखि विशेष शिक्षा कार्यक्रमलाई पुनः व्यवस्थित गरेको छ । आधारभूत तथा प्राथमिक शिक्षा परियोजना र डानिडाको सहयोगमा विशेष शिक्षा कार्यक्रम संचालन भैराखेको छ । यो कार्यक्रम आधारभूत तथा प्राथमिक शिक्षा परियोजनाको अभिन्न अंगको रूपमा रहेको छ । यो कार्यक्रमको उद्देश्य आधारभूत तथा प्राथमिक शिक्षा परियोजना लागू भएका जिल्लाहरूमा अपांगता भएका बालबालिकाहरूलाई साधारण विद्यालयहरूमा एकीकृत शिक्षा प्रदान गर्नु हो । यसका लागि आधारभूत तथा प्राथमिक शिक्षा परियोजनाको विशेष शिक्षा एकाईले कार्य गर्दैछ ।

अपांगता भएका बालबालिकाहरूका लागि विशेष शिक्षा कार्यक्रम संचालनार्थ विशेष शिक्षा एकाईले गर्दै आएका केही महत्वपूर्ण कामहरू देहाय बमोजिम छन्:-

१. समुदायका विभिन्न पक्षका मानिसहरूलाई कार्यक्रम बारे जनचेतना जगाउन विभिन्न माध्यमबाट जनचेतना कार्यक्रम संचालन,

२. अपांगताको यकीन तथ्यांक संकलनका लागि सर्भेक्षण कार्यक्रम,

३. एकीकृत शिक्षा व्यवस्था तथा स्रोत कक्षा संचालन व्यवस्था,

४. विभिन्न किसिमको शिक्षक तालिम,

५. गैरसरकारी संस्थाहरूसँग सम्बन्ध तथा समन्वय र

६. विभिन्न किसिमका शैक्षिक सामग्रीहरूको विकास तथा उत्पादन आदि ।

हाल विशेष शिक्षा परिषद्ले विशेष शिक्षा र विभिन्न किसिमका अपांगता सम्बन्धी निम्न बमोजिम परिभाषित गरी सोही अनुसार कार्यक्रम संचालन गर्दै आएको छ:-

**विशेष शिक्षा:**

विभिन्न किसिमका अपांग बालबालिकाहरूलाई अन्य सामान्य बालबालिका सरह उनीहरूको अपांगता अनुकूल शिक्षाको आवश्यकता पूरा गर्न विशेष किसिमबाट तयार गरिएको

शिक्षण सिकाई तथा तालिम व्यवस्थालाई विशेष शिक्षा भनिन्छ । विशेष शिक्षा दिनका निम्ति खासगरी निम्न दुई प्रकारले विद्यालय व्यवस्था गरिएको पाईन्छः-

**विशेष विद्यालयः**

अपांगताको किसिम अनुसार छुट्टाछुट्टै विद्यालयको व्यवस्था गरी खास खास किसिमका अपांगहरूलाई मात्र शिक्षण सिकाई गर्ने विद्यालय व्यवस्थालाई विशेष विद्यालय भनिन्छ ।

**एकीकृत विद्यालयः**

धेरैजसो हल्का, मध्यमखाले अपांग र दृष्टिविहीन अपांगहरूलाई साधारण विद्यालयमै राखी स्रोत कक्षा तथा आवश्यक सामग्रीको व्यवस्था गरी विशेष शिक्षा सम्बन्धी तालिम लिएका शिक्षक मार्फत शिक्षण सिकाई गर्ने व्यवस्थालाई एकीकृत विद्यालय भनिन्छ ।

**अपांगताः**

कुनै पनि व्यक्तिमा हुने शारीरिक, मानसिक तथा संवेदनात्मक विकृति जसले आफ्नो दैनिक कार्य सम्पादनमा बाधा पुऱ्याएको हुन्छ, त्यसलाई नै अपांगता भनिन्छ ।

**अपांगहरू निम्न बमोजिम हुन्छन्ः-**

**शारीरिक अपांगः**

जन्मिदा वा जन्मिसकेपछि कुनै दुर्घटना, बिरामी र निर्वलताले या मस्तिष्कमा असर पर्नाले विकृति देखापरी दैनिक कार्यमा बाधा नपर्ने, कुनै साधनको मद्दतले आफै गर्न सक्ने वा दैनिक कार्यमा आफू असक्षम हुने शारीरिक विकृतिलाई शारीरिक अपांग भनिन्छ ।

**सुस्त मनस्थितिः**

कुनै पनि व्यक्तिको १८ वर्ष उमेर पुग्नुभन्दा अगावै देखापर्ने औसतभन्दा कम मानसिक एवं बौद्धिक विकास क्षमता तथा आफ्नो उमेर सापेक्ष सामूहिक वातावरण सुहाउँदो क्रियाकलाप गर्न सक्ने क्षमतामा कमी हुनेलाई सुस्त मनस्थिति भनिन्छ ।

**बहिरा तथा सुस्त श्रवणः**

जुन व्यक्ति कान नसुन्ने, अस्पष्ट बोल्ने अथवा बोल्न नसक्ने र जसले सांकेतिक भाषा प्रयोग गर्नु पर्ने हुन्छ त्यस्ता व्यक्तिलाई बहिरा भनिन्छ ।

**अथवा,**

कुनै पनि व्यक्ति जो अन्य साधारण व्यक्तिको जस्तै शारीरिक तन्दुरुस्ती भएको, अन्य व्यक्ति समान सम्पूर्ण कार्य गर्न सक्ने, दिमाग टाठो बाठो भएको र केवल सुन्न बोल्न मात्र नसक्ने व्यक्तिलाई बहिरा भनिन्छ ।

कान कम सुन्ने, सफासँग वा ठिकै बोल्न सक्ने, कानमा हेयरिङ्गएड राखेको, बोलेर नै कुरा गर्न सक्ने र सांकेतिक भाषाबाट कुरा गर्ने व्यक्तिलाई "सुस्त श्रवण" भनिन्छ । तर कान पूरै बन्द भएको व्यक्तिलाई सुस्त श्रवण भन्न मिल्दैन ।

**दृष्टिविहीन वा दृष्टिशक्ति कमः**

जुन व्यक्ति दुबै आँखा विल्कुलै नदेख्ने र शिक्षण सिकाई गर्दा ब्रेललिपीको प्रयोग गर्नु पर्ने हुन्छ, त्यस्ता व्यक्तिलाई दृष्टिविहीन भनिन्छ ।

**अथवा,**

कुनै पनि व्यक्ति जो अन्य साधारण व्यक्तिको जस्तै शारीरिक तन्दुरुस्ती भएको, अन्य व्यक्ति जस्तै कार्य गर्न सक्ने क्षमता भएको, दिमाग टाठो बाठो भएको र केवल आँखा मात्र नदेख्नेलाई दृष्टिविहीन भनिन्छ ।

दुबै आँखा वा कुनै एउटा आँखा कम देख्ने, चश्माको प्रयोग गर्दा केही बढी देख्नसक्ने ब्रेललिपीको प्रयोग गर्ने वा नगर्ने व्यक्तिलाई दृष्टिशक्ति कम भएको भनिन्छ ।

**सिकाई कठिनाई (असक्षमता):**

सामान्यतया अन्य कुनै अपांगता नभएता पनि कुनै विषय र क्षेत्रमा सबै सुविधाहरू समान रूपमा प्राप्त हुँदा हुँदै पनि सिकाई उपलब्धी हासिल गर्न नसक्नुलाई सिकाई कठिनाई (असक्षमता) भनिन्छ । यसमा मानसिकस्तर कम नै हुन्छ भन्न सकिँदैन भने सबै विषयमा पनि सिकाई असक्षमता हुन्छ भन्न पनि सकिँदैन ।

**बोली, भाषा र संचार क्षमतामा समस्याः**

कुनै पनि व्यक्ति सुन्छ तर बोल्न सक्दैन, बोली स्पष्ट छैन, भकभके छ वा बोल्न समय लाग्छ वा नाकेबोली बोल्छ भने त्यस्तालाई बोली भाषा र संचार क्षमतामा समस्या भएको भनिन्छ ।

**बहु-अपांगताः**

शारीरिक अपांग, बहिरा, दृष्टिविहीन, सुस्तमनस्थिति जस्ता अपांगताको मिश्रित अवस्थालाई बहु-अपांगता भनिन्छ ।

**अथवा,**

कुनै पनि किसिमको दुई वा दुईभन्दा बढी अपांगताको मिश्रित अवस्थालाई वहु-अपांगता भनिन्छ । जस्तै - बहिरा र शारीरिक अपांग, शारीरिक अपांग र दृष्टिविहीन, दृष्टिविहीन र सुस्तमनस्थिति, सुस्तमनस्थिति र बहिरा आदि ।

**विशेष शिक्षाको नीतिः**

शिक्षाको राष्ट्रिय नीति अनुरूप अपांगहरूको निम्ति अनुकूल शिक्षाको व्यवस्था गरी राष्ट्रिय मूल धारामा समाहित गर्न देहाय बमोजिमको विशेष शिक्षा नीति तय गरिएको छः-

१. अपांगको सर्वमान्य परिभाषा गरी अपांगताको किसिम तथा मात्राको निर्धारण गर्ने ।

२. अपांग बालबालिकाको संख्या, उमेर, लिङ्ग, किसिम र मात्रा आदिको विस्तृत विवरणका लागि सर्भेक्षण कार्यक्रम र तथ्याङ्क संकलनको आवश्यक व्यवस्था गर्ने ।

३. विभिन्न किसिमका अपांग बालबालिकाहरूलाई दिइने प्राथमिक शिक्षा सबैका लागि शिक्षाको अभिन्न अंगको रूपमा विकसित गर्ने ।

४. अपांगहरूको आवागमनलाई समेत विचार गरी विशेष भौतिक सुविधा भएको विद्यालय भवनको निर्माण गर्ने व्यवस्था मिलाउने ।

५. अपांग बालबालिकाहरूलाई प्राथमिक तहदेखि माध्यमिक तहसम्मको शिक्षा निःशुल्क प्रदान गर्ने । यस उद्देश्यका लागि निजी क्षेत्रका सबै तहका विद्यालयहरूले समेत अपांगहरूलाई निःशुल्क शिक्षा दिनका लागि आवश्यक व्यवस्था मिलाउने ।

६. अपांग बालबालिकाहरूलाई साधारण विद्यालयमा एकीकृत रूपमा निःशुल्क विशेष शिक्षा प्रदान गर्ने र आवश्यकतानुसार विशेष विद्यालयको व्यवस्था गर्ने ।

७. तोकिएका न्यूनतम भौतिक एवं प्राविधिक पूर्वाधार तथा शर्तहरू पूरा गरेका विद्यालयहरूलाई मात्र विशेष शिक्षा कार्यक्रम संचालन गर्न अनुमति वा स्वीकृति दिने ।

८. विश्वविद्यालयहरूमा विशेष शिक्षा सम्बन्धी विषयको पठनपाठनको व्यवस्था गर्ने ।

९. संचालित सेवाको व्यापकता, स्तर र आर्थिक क्षमताको आधारमा पटके, आंशिक र पूर्ण अनुदानको व्यवस्था गर्ने ।

१०. विशेष शिक्षा दिने विद्यालयहरूको व्यवस्थापन पक्षलाई सुधार गर्न हालको निरीक्षण एवं सुपरीवेक्षण प्रणालीमा विशेष शिक्षाको निरीक्षण पक्षलाई समेत विचार गरी एकीकृत रूप दिने ।

११. अपांग बालबालिकाहरूलाई दिइने विशेष शिक्षाको लागि पाठ्यक्रम, पाठ्यपुस्तक र अन्य शैक्षिक सामाग्रीहरू एवं उपकरणको निर्धारण तथा उत्पादन गर्ने गराउने र आवश्यकतानुसार निःशुल्क उपलब्ध गराउने सम्बन्धमा समेत आवश्यक व्यवस्था गर्ने ।

१२. अपांगताका प्रारम्भिक अवस्थामा कतिपय लक्षणहरू स्वास्थ्य उपचारद्वारा निराकरण हुनसक्ने भएकोले सामान्य विद्यार्थीहरूले अध्ययन गर्न नियमित पाठ्यक्रम र शिक्षक तालिम पाठ्यक्रममा अपांगता सम्बन्धी स्वास्थ्य शिक्षा र विशेष शिक्षा सम्बन्धी सामान्य जानकारीहरू पाठ्यक्रममा समावेश गर्ने ।

१३. विशेष शिक्षाको लागि आवश्यकतानुसार पुस्तकालय र प्रयोगशालाको व्यवस्था गर्ने र हाल संचालित पुस्तकालयहरूमा पनि अपांगहरूले प्रयोग गर्न सक्ने सामाग्रीहरू राख्ने व्यवस्था क्रमिक रूपमा गर्दै जाने ।

१४. जेहेन्दार अपांग विद्यार्थीलाई उच्च शिक्षाको अवसर प्रदान गर्नलाई छात्रवृत्ति लगायत अन्य प्रोत्साहनको व्यवस्था गर्ने ।

१५. अपांग विद्यार्थीलाई आवश्यकतानुसार आवासीय सुविधा उपलब्ध गराउने ।

१६. अपांग विद्यार्थी बालबालिकाले दैनिक रूपमा प्रयोग गर्ने सामाग्रीहरू जस्तै ह्वील चेयर, बैशाखी, ह्वाइटकेन, श्रवण यन्त्र, ब्रेल स्लेटस्टाइलस, स्पेशल चेयर र कृत्रिम अंग आदि आयात गर्दा यथासम्भव विशेष सहुलियत दिने व्यवस्था गर्ने ।

१७. विशेष शिक्षाको क्षेत्रमा काम गर्ने शिक्षकहरूलाई कम्तिमा अन्य सार्वजनिक विद्यालयका शिक्षकले पाए सरहको तलब भत्ताको व्यवस्था गरी सो पेशालाई आकर्षक बनाउने ।

१८. विशेष शिक्षा दिने कार्यक्रमका लागि शिक्षक लगायत आवश्यक जनशक्तिको योजनाबद्ध विकास तथा व्यवस्था गर्ने ।

१९. शिक्षक तालिम संचालन गर्ने निकायसँग समन्वय राखी विशेष शिक्षा कार्यक्रमलाई आवश्यक पर्ने तालिमको पनि व्यवस्था गर्ने ।

२०. विशेष शिक्षाका लागि प्रयोग गरिने विशेष माध्यम जस्तो- ब्रेल, सांकेतिक भाषा आदिमा दक्षता हासिल गरेको भएमा अपांगता भएका योग्य व्यक्तिलाई समेत अपांगता अनुकूल विशष शिक्षा शिक्षकको रूपमा परिचालन गर्ने ।

२१. अपांगबालबालिकाको व्यक्तित्व तथा शारीरिक विकासका लागि सांस्कृतिक एवं खेलकूद कार्यक्रम र शारीरिक व्यायामको विशेष व्यवस्था गर्ने । यसका साथै राष्ट्रिय तथा अन्तर्राष्ट्रिय प्रतिष्पर्धात्मक कार्यक्रममा भाग लिने अवसर प्रदान गर्ने र सोको लागि आवश्यक जनशक्ति तयार गर्ने ।

२२. दोहोरो वा बहुअपांगता भएको व्यक्तिको हकमा सम्बन्धित क्षेत्रका विशेषज्ञहरूको राय र सुझाव अनुसार विशेष प्रकारको शिक्षा वा कार्यमूलक शिक्षाको व्यवस्था गर्ने ।

२३. अपांगताको किसिमको आधारमा परीक्षार्थीहरूको परीक्षा र मूल्यांकनको विशेष व्यवस्था गर्ने ।

२४. अपांग बालबालिकाहरूका लागि विशेष शिक्षा दिई सराहनीय कार्य गर्ने संघ संस्था तथा व्यक्तिहरूलाई प्रोत्साहन गर्न, पुरस्कार आदिको व्यवस्था गर्ने ।

२५. विशेष शिक्षा परिषद्ले तोकेको निकायको सहमति लिएर मात्र गैर सरकारी संघ संस्थाले विशेष शिक्षा कार्यक्रम संचालन गर्ने ।

२६. अपांगताको किसिम र मात्रा अनुसार विशेष शिक्षा कार्यक्रम संचालन गर्न आवश्यक जनशक्ति तयार गर्ने उद्देश्यले आवश्यक पूर्वाधार तथा शर्तहरू तोकी तालिम केन्द्र स्थापना गर्नका लागि कार्यक्रम संचालन गर्न चाहने राष्ट्रिय तथा अन्तर्राष्ट्रिय गैर सरकारी संस्थाहरूलाई प्रोत्साहन गर्ने ।

२७. राष्ट्रिय तथा अन्तर्राष्ट्रिय गैरसरकारी संस्था र सरकारी निकायबीच विशेष शिक्षाको क्षेत्रमा अन्तरसम्बन्ध तथा समन्वय कायम गरी गैर सरकारी संघ संस्थालाई राष्ट्रिय विशेष शिक्षा कार्यक्रममा सहभागी हुन प्रोत्साहन गर्ने र यस कार्यक्रममा कार्यरत गैरसरकारी संस्थाको भौतिक एवं प्राविधिक जनशक्ति विकास एवं विस्तार गर्न आवश्यक सहयोग प्रदान गर्ने ।

२८. परोपकारी एवं अन्य सामाजिक संघ संस्थालाई विशेष शिक्षा कार्यक्रम संचालन गर्न प्रोत्साहित गर्ने ।

२९. विशेष शिक्षालाई सीप केन्द्रीत बनाई समुदायमा पुनर्स्थापन गर्न अपांगहरूको क्षमता र योग्यताको आधारमा प्राविधिक शिक्षा तथा व्यावसायिक तालिमको व्यवस्था गर्ने ।

३०. प्रौढ अपांगहरूको लागि सीपमूलक अनौपचारिक शिक्षा कार्यक्रम संचालन गर्ने ।

३१. विभिन्न सांस्कृतिक, धार्मिक, जातियता, अन्धविश्वास, रुढीवादी परम्परा, चेतनाको कमी र आर्थिक कारणले अधिकांश जनमानसमा व्याप्त रहेको अपांगप्रतिको गलत धारणामा आमूल परिवर्तन ल्याउन विभिन्न स्तरमा भेला, गोष्ठी गर्ने र आमसंचारका माध्यमबाट सर्वसाधारणमा अपांगता सम्बन्धी जनचेतना कार्यक्रम संचालन गर्ने ।

३२. अपांग बालबालिकाहरूलाई शैक्षिक अवसर प्रदान गर्ने वातावरण जुटाउन र उनीहरूलाई समुदायमा सामाजिकीकरणका लागि तिनका बाबु, आमा, अभिभावक, शिक्षक तथा निकट सम्पर्कमा आइरहने व्यक्तिहरूलाई मनोवैज्ञानिक उत्प्रेरणा दिने खालको सरसल्लाहमूलक कार्यक्रम संचालन गर्ने ।

३३. विशेष शिक्षा परिषद्ले राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरमा उपलब्ध हुने विभिन्न स्रोत तथा सामग्रीहरूको परिचालन गर्ने Net Work प्रणालीको विकास र विस्तार गर्ने ।

माथि उल्लेखित नीति कार्यान्वयन गर्ने सम्बन्धमा छुट्टै अल्पकालीन र दीर्घकालीन कार्यनीति र कार्यक्रम बनाई यथाशक्य छिटै कार्यान्वयन गर्न शुरु गरिनेछ ।